# गाली र बेइज्जती ऐन, २०१६

| लालमोहर सदर मिति | नेपाल राजपत्रमा प्रकाशित मिति |
|---|---|
| २०१६।३।१४ | २०१६।३।१५ |

| संशोधन गर्ने ऐन | लालमोहर र प्रकाशन मिति |
|---|---|
| १. गाली र बेइज्जती (पहिलो संशोधन) ऐन, २०३७ | २०३७।५।२६ |
| २. केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ | २०३९।५।३ |
| ३. केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ | २०५५।१०।७ |
| | प्रमाणीकरण र नेपाल राजपत्रमा प्रकाशन मिति |
| [1]४. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | २०६६।१०।७ |

**२०१६ सालको ऐन नं. १०**

[2]... ... ...

**गाली र बेइज्जतीको कसूरको निमित्त सजायको व्यवस्था गर्न बनेको ऐन**

सर्वसाधारणको इज्जत र मान मर्यादा कायम राख्न पाउने अधिकारको रक्षाको लागि गाली र बेइज्जतीको कसूरको निमित्त सजायको व्यवस्था गर्न आवश्यक देखिएकोले,

श्री ५ महाराजाधिराजबाट मन्त्रिमण्डलका सल्लाह अनुसार यो ऐन बनाई जारी गरिबक्सेकोछ ।

**१. संक्षिप्त नाम, विस्तार र प्रारम्भ**: (१) यस ऐनको नाम "गााली र बेइज्जतीको ऐन, २०१६" रहेकोछ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

१ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको ।
२ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

(३) यो ऐन नेपाल [३]... ... ...भर लागू हुनेछ र जहाँसुकै रहे बसेको भए तापनि नेपाल [४]... ... ... का सबै नागरिकहरूलाई लागू हुनेछ ।

२. **परिभाषा**: विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा “सर्वसाधारण” भन्नाले सर्वसाधारण जनताको कुनै वर्ग वा कुनै जनसमुदायलाई समेत जनाउँछ र “सार्वजनिक” शब्दको अर्थ सोही बमोजिम लगाइनेछ ।

३. **बेइज्जती**: कसैले अरू कुनै व्यक्तिको इज्जतमा धक्का पुऱ्याउने नियतले वा धक्का पुग्ला भन्ने जानी जानी, वा विश्वास गर्ने कारण भई लेखेर वा वचनले वा संकेतले वा बुझिने गरी आकार चिन्हद्वारा सो व्यक्तिलाई कुनै दोष लगाएमा वा त्यस्तो कुरा [५]प्रकाशित गरेमा निजले सो व्यक्तिको बेइज्जती गरेको मानिनेछ ।

**स्पष्टीकरण:**

(१) मरिसकेको कुनै व्यक्तिलाई कुनै दोष लगाइएकोमा सो गरेको समय निज जीवित रहेको भए निजको इज्जतमा धक्का पुग्ने रहेछ र निजको परिवार वा नजिकको अन्य नातेदारहरूको भावनामा चोट पुऱ्याउने मनसायले गरिएको रहेछ भने बेइज्जती गरेको ठहर्न सक्नेछ ।

(२) व्यंग गरी वा अरू कुनै घुमाउरो तवरले लगाइएको दोष बेइज्जती ठहर्न सक्नेछ ।

[६](२क) जानाजान कसैको चरित्र हत्या गर्न वा अनुचित लाञ्छना लगाउने नियतले दोष लगाएमा वा प्रचार प्रसार गरेमा बेइज्जती गरेको ठहर्न सक्नेछ ।

(३) कसैले अरू कुनै व्यक्तिलाई सोझै वा घुमाउरो तवरले अरूको दृष्टिमा निजको नैतिक वा बौद्धिक चरित्र वा जात वा पेशा सम्बन्धी चरित्र वा ख्यातिलाई होच्याउने गरी, वा निजको शरीर घृणित अवस्थामा वा सामान्यतः अपमानित सम्झिइने अवस्थामा छ भन्ने



---

३ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

४ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

५ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

६ केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ द्वारा थप ।

विश्वास पर्ने गरी दोष नलगाएसम्म निजको इज्जतमा धक्का पुऱ्याएको मानिने छैन ।

४. **बेइज्जती गरेको नठहरिने अवस्था**: दफा ३ मा जुनसुकै कुरा लेखिएको भए तापनि देहायको काम कुरा गर्नु बेइज्जती ठहर्दैन :–

(१) सर्वसाधारणको हितको लागि आवश्यक भएमा कुनै व्यक्तिलाई साँचो कुराको दोष लगाउनु वा त्यसको प्रकाशन गर्नु, कसैलाई लगाइएको दोष सर्वसाधारणको हितको लागि लगाइएको हो वा होइन भन्ने कुरा तथ्यमा निर्भर गर्नेछ ।

(२) कुनै राष्ट्रसेवकले आफ्नो ओहदाको काम कर्तव्य गर्दाको निजको आचरणलाई लिएर वा सो आचरणबाट बुझिनेसम्मको मात्र निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,

**व्याख्या** : यस खण्डको तात्पर्यको लागि "राष्ट्रसेवक" भन्नाले [७]भ्रष्टाचार निवारण ऐन, २०५९ मा परिभाषा गरिए बमोजिमको व्यक्ति सम्झनु पर्छ ।

(३) कुनै व्यक्तिको सार्वजनिक प्रश्नसंग सम्बन्ध पर्ने आचरण र सो आचरणबाट बुझिनेसम्मको मात्र निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,

(४) कुनै अदालती कारवाईमा यसको नतिजाको वास्तविक रूपमा साँचो प्रतिवेदन प्रकाशित गर्नु,

**स्पष्टीकरण**: अदालतका कुनै न्यायाधीश वा अरू अधिकृतले अदालतमा मुद्दाको कारवाई हुनु भन्दा अगाडि मौका सरजमीन बुझ्न कायम गरेको खुला ईजलासलाई यस खण्डको तात्पर्यको लागि अदालत सम्झनु पर्छ ।

(५) कुनै अदालतले छिनेको देवानी वा फौज्दारी मुद्दाको गुण वा दोषलाई लिएर वा त्यस्तो कुनै मुद्दाको वादी, प्रतिवादी, साक्षी वा वारिस भएको कुनै व्यक्तिको आचरणलाई लिएर वा सो आचरणबाट

---

७ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

बुझिनेसम्मको मात्र निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,

(६) कुनै कुरा गर्ने व्यक्तिले सर्वसाधारणको रायको लागि सो कुरा पेश गरेकोमा सो कुराको गुण वा दोषलाई लिएर वा त्यसबाट बुझिने सम्मको मात्र सो कुरा गर्ने व्यक्तिको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,

**स्पष्टीकरण** : कुनै कुरा गर्ने व्यक्तिले सो कुरा सर्वसाधारणको रायको लागि पेश गर्दा सो गरेको भनी स्पष्ट रूपले उल्लेख गर्नु वा सो आशय बुझिने कुनै काम गर्नु यथेष्ट हुनेछ,

(७) कुनै व्यक्तिको अर्को कुनै व्यक्ति उपर कानूनद्वारा वा निजसंगको कानूनी कबुलियतद्वारा कुनै अधिकार भएकोमा निजले सो अधिकार सम्बन्धी काम कुरामा सो अर्को व्यक्तिको आचरणमा असल नियतले कुनै खोट लगाउनु,

(८) कसै उपर लाग्ने अभियोग सो विषयमा निज उपर कानूनी अधिकार भएका व्यक्ति छेउ असल नियतले लगाउनु,

(९) आफ्नो वा अरूको हितको रक्षाको लागि वा सर्वसाधारणको हितको लागि असल नियतले कसैको चरित्रलाई दोष लगाउनु, र

(१०) कसैलाई निजको हितको लागि वा निजको स्वार्थ भएको व्यक्तिको हितको लागि वा सर्वसाधारणको हितको लागि अरू कुनै व्यक्तिको विरुद्ध सतर्क गर्नु ।

[८]**५. बेइज्जती गरेमा वा बेइज्जती हुने कुरा छापे खोदेमा दण्ड सजाय**: कसैले देहायको कुनै कसूर गरेमा निजलाई पाँचहजार रुपैयाँसम्म जरिवाना हुनेछ र दुई वर्षसम्म कैदको सजाय पनि हुन सक्नेछ :-

(१) अरू कसैको बेइज्जती गरेमा, वा

८ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

(२) कुनै कुरा छापे वा खोदेमा अरू कसैको बेइज्जती हुन जान्छ भन्ने जानी जानी विश्वास गर्ने मनासिब कारण भई सो कुरा छापेमा वा खोदेमा ।

६. **बेइज्जती हुने कुरा [९]छापिएको वा खोदिएको कुनै कुराको, बिक्री गरेमा दण्ड सजायः** कसैले कुनै कुरामा बेइज्जती हुने कुरा [१०]छापिएको वा खोदिएको छ भन्ने जानी जानी सो कुरा बिक्री गरेमा वा बिक्रीको निमित्त राखेमा निजलाई [११]एकसय रुपैयाँसम्म जरिवाना हुनेछ र छ महिनासम्म कैदको सजाय पनि हुन सक्नेछ ।

७. **शान्ति भंग गराउने नियतले जानी जानी गाली गरेमा दण्ड सजायः** गाली गरी कसैलाई उत्तेजित पारेबाट निजले सार्वजनिक शान्ति भंग वा अरू कुनै अपराध गर्नेछ भन्ने नियतले वा त्यस्तो हुने सम्भावना छ भन्ने जानी जानी कसैले कसैलाई गाली गरी उत्तेजित पारेमा [१२]एकसय रुपैयाँदेखि पाँचसय रुपैयाँसम्म जरिवाना हुनेछ र छ महिनासम्म कैदको सजाय पनि हुन सक्नेछ ।

८. **आईमाईलाई अपमानित गर्ने नियतले कुनै काम कुरा गरेमाः** कसैले कुनै आईमाईको अपमान गर्ने नियतले, निजले देख्ने सुन्ने गरी, कुनै कुरा भनेमा वा कुनै किसिमको शब्द वा हावभाव व्यक्त गरेमा वा कुनै वस्तु देखाएमा वा निजको गोपनियतामा दखल दिएमा एकसय रुपैयाँदेखि पाँचसय रुपैयाँसम्म जरिवाना हुनेछ र ६ महिनासम्म कैदको सजाय पनि हुन सक्नेछ ।

९ **मामूली गाली बेइज्जती वा अपमान हुने कामः** साधारण समझ र मिजासका व्यक्तिले उजूर नगर्ने मामूली किसिमको गाली बेइज्जती वा अपमान कुनै कामबाट भएकोमा वा सो गर्ने नियतले वा सो हुने सम्भावना छ भन्ने जानी जानी गरेकोमा यो ऐन अन्तर्गतको कसूर ठहर्दैन ।

[१३]१० **खति पुऱ्याउने नियतले झुट्ठा अभियोग लगाएमा दण्ड सजायः** कसैले कसैको विरुद्ध यो ऐन अन्तर्गत गाली वा बेइज्जतीको मुद्दा दायर गर्न न्यायोचित वा कानूनी आधार छैन भन्ने जानी जानी निजलाई खति पुऱ्याउने नियतले निजको विरुद्ध त्यस्तो

---

९ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

१० सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

११ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

१२ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

१३ पहिलो संशोधनद्वारा संशोधित ।

मुद्दा दायर गरेमा वा गराउन लगाएमा सो व्यक्तिलाई बेइज्जती सम्बन्धी मुद्दामा भए [१४]पाँचसयदेखि पाँचहजार रुपैयाँसम्म जरिवाना हुनेछ र गाली सम्बन्धी मुद्दामा भए [१५]एकसयदेखि एक हजार रुपैयाँसम्म जरिवाना हुनेछ । त्यसरी मुद्दा दायर गर्ने वा गराउने व्यक्तिबाट मुद्दा हेर्ने अधिकारले विपक्षीलाई सो मुद्दामा लागेको खर्च समेत भराउनेछ ।

**व्याख्या** : यस दफाको प्रयोजनको लागि "खति" भन्नाले कुनै व्यक्तिको शरीरमा, मनमा, इज्जतमा वा सम्पत्तिमा गैर-कानूनी तवरले गरिएको हानी नोक्सानी सम्झनु पर्छ ।

[१६]**११. हदम्यादः** यो ऐन अन्तर्गत कसैलाई मुद्दा चलाउनु पर्ने कारण भएमा त्यस्तो कारण परेको मितिले छ महिनाभित्र नालिस दिनु पर्नेछ ।

[१७]**११क. कार्यविधि अपनाउनेः** यस ऐन अन्तर्गतको मुद्दामा कारवाई किनारा गर्दा मुद्दा हेर्ने अधिकारीले [१८]विशेष अदालत ऐन, २०५९ अनुसारको कार्यविधि अपनाउनेछ ।

[१९]**१२. क्षतिपूर्तिः** कसैले कसैलाई गाली वा बेइज्जती गरिएको ठहरिएमा गाली वा बेइज्जती गरिएको व्यक्तिलाई [२०]निजको सामाजिक प्रतिष्ठा र इज्जत समेतलाई विचार गरी मुद्दा हेर्ने अधिकारीले कसूरदारबाट मनासिब माफिकको रकम क्षतिपूर्तिको रूपमा भराई दिनेछ र त्यस्तो व्यक्तिलाई कसूरदारबाट मुद्दामा लागेको खर्च समेत भराउनेछ । मरिसकेको कुनै व्यक्तिलाई बेइज्जती गरेको ठहरिएमा सो बेइज्जतीबाट भावनामा चोट लागेको निजको नजीकको हकवालालाई त्यस्तो क्षतिपूर्ति र खर्चको रकम दिइनेछ ।

**१३. खारेजीः** मुलुकी ऐन गाली बेइज्जतीको महलको १ नं., २ नं., ३ नं., ४ नं., ६ नं., ६क नं., ७ नं., ८ नं., र ९ नं. खारेज गरिएकोछ ।



---

१४ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

१५ सञ्चारसम्बन्धी केही नेपाल कानुन संशोधन गर्ने अध्यादेश, २०६२ द्वारा संशोधन भई केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ द्वारा स्वतः जागेको ।

१६ केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ द्वारा संशोधित ।

१७ केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ द्वारा थप ।

१८ विशेष अदालत ऐन, २०५९ द्वारा संशोधित ।

१९ पहिलो संशोधनद्वारा संशोधित ।

२० केही नेपाल ऐन (संशोधन) ऐन, २०५५ द्वारा संशोधित ।

**द्रष्टव्य** :

१. २०२० साल भाद्र १ गतेदेखि लागू भएको मुलुकी ऐनमा बेइज्जतीको महलको व्यवस्था नभएको ।

२. नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रूपान्तर गरिएका शब्दहरू :-

(क) "रिपोर्ट" का सट्टा "प्रतिवेदन"

(ख) "अफिसर" को सट्टा "अधिकृत"